


BOOKLET

NP




# सुनदह

## धोर पाटन, रुकुम

### संरक्षणमा धर्म, संस्कृति र परम्पराको महत्त्व

**बाउन्न पोखरी त्रिपन्न ताल**
**धन मिली जा, लक्ष्मी जा ।**




# नेपाल सरकार
## वन तथा भू-संरक्षण मन्त्रालय
## राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग
(........................................ शाखा)

फोन नं. : ४२२०८५०, ४२२०९१२, ४२२७९२६
फ्याक्स नं. ४२२७६७५








पो. ब. नं. - ८६०
बबरमहल, काठमाडौं
Email:info@dnpwc.gov.np
http//:www.dnpwc.gov.np


संकेत नं. :-
पत्र संख्या :-
चलानी नं. :-

## दुई शब्द

स्वच्छ पानीसंग मानव समुदायको विकाससंगै अन्योन्याश्रित सम्बन्ध रही आएको छ । स्वच्छ पानीको श्रोतलाई संरक्षण गर्नु नेपाल सरकारको प्रमुख दायित्व अन्तंगत पर्दछ । सिमसारको संरक्षणको लागि राष्ट्रिय सिमसार नीति, २०५९ लगायत सिमसारको जैविक विविधता संरक्षण, पानीको सदुपयोग र पानीमा आश्रित जलचरको खेतीलाई व्यवस्थित गर्ने विभिन्न ऐन र नियमावलीहरु हाल कार्यान्वयनमा छन् । राष्ट्रिय सिमसार नीति अनुरुप संरक्षणको दृष्टिकोणले सरंक्षित क्षेत्र वा राष्ट्रिय वन क्षेत्र भित्र रहेका सिमसारहरुलाई सरकारद्धारा नै संरक्षण तथा व्यवस्थापन गर्ने कार्य भईरहेको छ भने सार्वजनिक स्थानमा रहेका सिमसारहरुलाई जनताद्धारानै संरक्षण तथा व्यवस्थापन गर्नु पर्दछ भन्ने नीतिगत व्यवस्था रही आएको छ ।

विश्वमा स्वच्छ पानीको हाहाकार भईरहेको अवस्थामा स्वच्छ पानीको श्रोतमा धनि मानिएको नेपालले हिमाली क्षेत्रमा त्यहाँका ताल, कुण्ड र पोखरी आदीको सर्वेक्षण गरी ती श्रोतमा निर्भर रहेका जनता र जैविक विविधताको संरक्षणका साथ साथै तिनै श्रोतको शुद्धतामा निर्भर तल्लो भागमा बसोबास गर्ने नदी तटिय जनताको हित सरक्षणको लागि उक्त महत्वपुर्ण कार्य भईरहेको छ । यस्ता क्षेत्रहरुको सर्वेक्षण कार्यमा डब्लु डब्ल एफ नेपालले सहयोग गर्दै आएको छ भने यस विभागले प्राविधिक समन्वयका कार्यहरु गर्दै आएको छ । यी सर्वेक्षणका कार्यहरुबाट प्राप्त नतिजालाई आधार मानी नेपाल सरकारले गरेको अनुरोधलाई आत्मासात गर्दै रामसार सचिवालयले उच्च हिमाली क्षेत्रका रारा (मुगु), फोक्सुण्डो (डोल्पा), गोसाइकुण्ड र वरिपरिका तालहरु (रसुवा) तथा गोक्यो र वरिपरिका तालहरु (सोलुखुम्बु) लाई अन्तराष्ट्रिय महत्वको सिमसार अन्तंगतको रामसार सूचिमा समावेश गरी सकेको छ । सरंक्षित क्षेत्र बाहिर अवस्थित तालहरुको संरक्षण र सदुपयोगको क्रमलाई यो सर्वेक्षण कार्यले सघाउ पुर्‍याउने विश्वास लिएको छु ।

सिमसार क्षेत्रको जैविक विविधता संरक्षण र यसको धार्मिक, सांस्कृतिक, ऐतिहासिक, चरिचरन, पर्यटन, जडीबुटी संकलन र सदुपयोग जस्ता दैनिक सरोकार र जीविकोपार्जनसंग सम्बन्धित विषयवस्तुका पुस्तिकाहरुको नेपालीमा प्रकाशनबाट स्थानीयस्तरमा संरक्षण, व्यवस्थापन र सदुपयोगमा सहयोग पुग्नुको साथै जैविक विविधता संरक्षणमा समेत महत्वपूर्ण सहयोग पुग्ने मैले अपेक्षा राखेको छु । अन्तःमा संरक्षण, व्यवस्थापन र विकास संगसंगै सम्बन्धित महत्वपूर्ण वैज्ञानिक तथ्यांकहरु संकलन गरी पुस्तकको रुपमा पाठकहरुको माझ ल्याई सहयोग गर्नु हुने सबै धन्यवादका पात्र हुनुहुन्छ ।

(गोपाल प्रसाद उपाध्याय)
महानिर्देशक

# राष्ट्रिय प्रतिनिधिको सन्देश

सिमसार पारिस्थितिक प्रणालीको एक महत्वपूर्ण अंग हो । सिमसारले पानीको भण्डारण र स्वच्छीकरण गर्ने, स्थानीय वासिन्दाहरूलाई विभिन्न प्रकारका श्रोत उपलब्ध गराउने, विभिन्न दुर्लभ वन्यजन्तु एवं वनस्पतिलाई वासस्थान प्रदान गर्ने र धार्मिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकीय स्थलको रूपमा अतुलनिय भूमिका निर्वाह गरेको हुन्छ ।

नेपाल अनेकौं महत्वपूर्ण सिमसारको धनी राष्ट्र भएता पनि अझै यी सिमसारहरूको खोज र महत्वको विश्लेषण हुन बाँकी नै रहेको छ । तराईको कतिपय सिमसारको सर्वेक्षण तथा अनुसन्धान भई दस्तावेजहरू तयार भइसकेको छ, तर पहाडी क्षेत्रमा अवस्थित धेरै जसो सिमसारहरूको अवस्थाबारे हामी अनभिज्ञ छौं । यही जानकारीको कमिलाई परिपूर्ति गर्न डब्लु डब्ल एफ नेपालको स्वच्छ जल सम्पदा कार्यक्रम अग्रसर भएको छ ।

स्वच्छ जल सम्पदा कार्यक्रमले हाल उच्च हिमाली क्षेत्रमा रहेका सिमसारहरूको विवरण तयार गर्ने क्रम अगाडि बढाएको छ । यसै सन्दर्भमा प्रस्तुत पुस्तिकाले परम्परागत रूपले जीवन यापन गर्दै आएका आदिवासी जनजातिहरूले धार्मिक, ऐतिहासिक र सांस्कृतिक आस्था एवं विश्वासका आधारमा ती क्षेत्रका संरक्षण तथा उपयोग गरेको जिवन्त उदाहरणहरू प्रस्तुत गरेको छ ।

यो अनुसन्धान अगाडि बढाउन प्राविधिक रूपले सहयोग गरिदिनु भएकोमा वन विभाग, राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग र आर्थिक सहयोग गरिदिनु भएकोमा डब्लु डब्ल एफ नेदरल्याण्ड/ डब्लु डब्ल एफ ईन्टरनेशनल र डब्लु डब्ल एफ युके प्रति डब्लु डब्ल एफ नेपाल हार्दिक कृतज्ञता ज्ञापन गर्दछ ।

अन्त्यमा यस किसिमको विवरण संकलन र सो को प्रकाशनबाट अन्य क्षेत्रका समसारहरूको संरक्षण, सम्वर्धन र बुद्धिमता उपयोग गर्न सघाउ पुऱ्याउने छ भन्ने मैले अपेक्षा गरेको छु ।

Manandhar

**अनिल मानन्धर**
राष्ट्रिय प्रतिनिधि
डब्लु डब्लु एफ नेपाल

"बाउन्न पोखरी त्रिपन्न ताल" को उपनामले प्रसिद्ध रुकुम जिल्ला ऐतिहासिक कालमा विभिन्न नामले परिचित हुने गर्दथ्यो। राप्ती अञ्चलको उत्तरी क्षेत्रमा अवस्थित रुकुम जिल्ला मध्यकालीन युगमा बाइसे राज्यहरुमध्ये रुकुमकोट, मुसीकोट, बाफीकोट, गोतामकोट, आठबीसकोट, जहारीकोटहरु पर्दा रहेछन्।

रुकमणि देवीको नामबाट रुकुमकोट जिल्लाको नामाकरण भएको भन्ने किम्बदन्ती पाइँदो रहेछ। राप्ती अञ्चलको उत्तरी भेगमा पर्ने सुन्दर सिस्ने हिमालको काखमा अवस्थित रुकुम जिल्ला रणबहादुर शाहको पालामा एकिकरण भएको रहेछ। विक्रम सम्वत् २०१८ सालमा यस जिल्लालाई मध्य पश्चिमाञ्चल विकास क्षेत्रमा गाँभिएको रहेछ।

आफ्नै परम्परागत लोक संस्कृति, चालचलन, रीतिरिवाज रुकुम जिल्लाको ऐतिहासिक, सामाजिक सम्पदा रहेछ। विविध जनजाति, भाषाभाषी, स-साना खाल्डा-खुल्डी, थुम्का, टाकुराहरु भएको यस जिल्लालाई "बाउन्न पोखरी त्रिपन्न ताल" भनि गाउँलेहरु चिन्दारहेछन्।

लगभग २,८७,७०० हेक्टर क्षेत्रफलमा फैलिएको रुकुम जिल्ला बेसी, पहाड, लेक, हिमाल, नदी नाला, समुद्र सतहबाट ७५४ देखि ६,००० मीटर उचाईसम्म फैलिएको छ। हरेक पर्वत माला, भीर-पहारादेखि जिल्लाको उत्तरी भेगमा हँसिलो मुहार लिएर पसारिएको सिस्ने हिमाल जसको उचाई ५,८४१ मिटर छ। उक्त हिमाल दक्षिण क्षेत्रमा रहेका जनवर्गहरुको जीवनमा महत्त्वपूर्ण भूमिका रहेको कुरा गाउँका बुढा-पाकाहरु बताउँछन्।

## रुकुम जिल्लामा रहनुभएका आदिवासी जनजातीहरु :-

मगर २९.५८ प्रतिशत, क्षेत्री ३८.४५ प्रतिशत, ब्राम्हण २.८३ प्रतिशत, ठकुरी ०.५५ प्रतिशत दमाई ४.४८ प्रतिशत, सार्की १.०५ प्रतिशत, कामी १५.३९ प्रतिशत र अन्य ७.८८ प्रतिशत रहेको पाइन्छ। क्षेत्रीको बाहुल्य रहेको र ठकुरी जातीको जनसंख्या न्यून रहेको भन्ने कुरा जानकारीमा आएको छ। रूकुम जिल्लामा जम्मा ३३५.४३ धरधुरी कुल जनसंख्या १,८७,८१६ जसमा पुरूष संख्या ९५,२६७ र महिला जनसंख्या ९२,५४९ रहेको आँकडा पाइन्छ।

रूकुम जिल्लाको उत्तर पूर्व क्षेत्रहरू काँडा-काँक्री, महत, चुनवाङ, कोल, तकसेरा हुकाम, मेकोट, रन्मा, नाङ, प्वाङ गाउँ विकास समितिहरूमा मगरहरूको परम्परागत बसोबास रहेको पाइन्छ। त्यसैगरी मुसीकोट, बाफीकोट, रूकुमकोट, आठबीसेकोट, डाँडा गाउँ, बिजयश्वरी, पेउध, मरू, खारा, रूधा, होल्मा, पोखरा, पिपल, स्यालपाखा, साँख, छिताङ, र सिम्ली गाउँ विकास समितिमा क्षेत्री, ठकुरी, कामी, दमाई आदि वसोवास गर्दा रहेछन्।

## भाषा - २०४८ को जनगणना अनुसार :-

रूकुम जिल्ला स्थानीय स्तरमा परम्परागत रूपमा बोलिने भाषागत रूपमा धनी मानिएको छोरो-घोडो, आस्न-तल, माउवा, बाबु र नानी, जोई-स्वास्नी, बल्ल-गोरू, ज्याला-वेसी, गल्यो-खस्यो, घारी-माथी, दिग-तल जस्ता विविध भाषाहरू प्रयोगमा रहेछन्। सांस्कृतिक स्रोत-साधन रीतिरिवाजसँग आवद्ध



रहेको त्यस्ता भाषाहरू विस्तारै लोप भइरहेको कुरा गाउँका बूढा-पाकाहरूले विभिन्न छलफल गर्ने क्रममा बताउनु भयो । नेपाली भाषामा पठन-पाठन भएकोले त्यस्तो भाषाहरू दैनिक जीवनमा प्रयोग हुन छाडेको भन्ने दुखेसो पोख्दछन् बूढा-पाकाहरू । आफ्नो मौलिक भाषा बिर्से चमेराको जिन्दगी भइन्छ, भन्ने पुर्ख्यौली कथन सम्झदा ती भाषाहरू बचाएर राख्न सके प्राकृतिक संरक्षणमा टेवा पुग्दथ्यो होला ।

## धर्म

रूकुम जिल्लामा हिन्दु धर्मालम्बीहरूको बाहुल्यता देखिन्छ । जस्तै हिन्दु धर्म स्थलले ९९.६० प्रतिशत ओगटेको छ भने बौद्ध ०.२१ प्रतिशत, ईसाई ०.०३३ प्रतिशत र अन्य ०.०२२ प्रतिशत रहेको पाइन्छ ।

## सिमसार र किम्बदन्ती :–

बाउन्न पोखरी त्रिपन्न तालको रूपमा परिचित रूकुम जिल्ला भरी नै साना-ठूला सिमसार क्षेत्रहरू रहेको पाइन्छ । प्रत्येक त्यस्ता सिमसार क्षेत्रहरू धर्म, संस्कार, संस्कृति, विश्वास जस्ता आस्थाको प्रतीकको रूपमा रहेको कुरा छलफलमा रहनुभएका बूढा-पाकाहरूले बताउनु भयो ।

## स्यार्पु ताल

पर्यटन प्रवर्द्धनको दृष्टिले महत्त्वपूर्ण मानिएको स्यार्पु ताल बाँफिकोट गाउँ विकास समितिमा पर्दछ । २.७ वर्ग कि.मी. क्षेत्रफल रहेको उक्त स्यार्पु ताल त्रिकोणात्मक आकृतिमा प्राकृतिक रूपले रहेको छ ।

## कमल ताल :–

१.९५ वर्ग कि.मी. क्षेत्रफलमा फैलिएको उक्त ताल शोभा गाउँ विकास समितिको पहाडी उपत्यकामा परापूर्व कालदेखि रहेको तथ्य उक्त गाउँका जानकार व्यक्तिहरू बताउँछन् । कमल तालले रूकुमकोट उपत्यकालाई रमरणीय बनाएको कुरा छलफल कार्यक्रममा सहभागी मित्रहरूले बताउनु भयो । धार्मिक परम्परागत किम्बदन्ती अनुसार उक्त कमल तालको पानीले नुहाउने गरेमा आफ्नो जीवनमा भएका पाप जस्ता कुराहरूको नष्ट हुन्छ भन्ने मान्यता रहेको कुरा उनीहरूले छलफलमा बताए ।

धार्मिक विधिअनुसार माघे संक्रान्तीमा विभिन्न ठाउँबाट उक्त कमल तालमा पाप, कुकर्मको नष्ट होस् र मुक्ति पाउन सकियोस् भनि भक्तजनहरू

तालको पानीले नुहाउन आउने गर्दछन् । नेपाल अधिराज्यको सबैभन्दा राम्रो कमल फूल परापूर्वकालदेखि नै त्यस तालमा फुल्ने भएकाले कमल ताल नाम रहन गएको भन्ने कथन सहभागीहरूले हामीलाई सुनाए । कमल फूलको “जराको अचार, फूलबाट बनेको गेडा, कमल पित्तको घरेलु औषधी तथा अन्य घरेलु औषधी” को रूपमा गाउँ बासीहरूले प्रयोग गर्दा रहेछन् ।

## सम्पे ताल :-

गोतामकोट गाउँ विकास समिति अन्तर्गत पर्ने सम्पे ताल अन्य ताल भन्दा सानो आकृति भएको कुरा छुट्टै छलफल गर्ने क्रममा सहभागीहरूले बताए । उच्च लेकाली भाग चित्री पाटनको बीचमा यो ताल अवस्थित रहेछ । हिमालयको फेदीमा रहेको सम्पे ताल अत्यन्त प्राकृतिक सुन्दरताले भरीपूर्ण भएको कुरा उनीहरूले बताए । त्यस ठाउँबाट सिस्ने हिमालको उत्तरी मोहडाको मनोरम दृश्यावलो कन गर्न सकिन्छ भन्ने तथ्य पनि उनीहरूले बताए । उपरोक्त तालको सहभागितामूलक संरक्षण र पथ-पर्यटनको विकास गर्न सक्ने अवसर पनि देखिन्छ रे ।

## गुप्त दह :-

सिस्ने हिमालको काखैमा रहेको यस गुप्त दह अत्यन्तै सुन्दर प्रकृतिको छ भन्ने कुरा उहाँहरूले बताउनुभयो । यो दहमा “पानी भुमरी पर्ने हुँदा” पानीको भुमरी हेर्न पाउँदा आगन्तुकहरू आनन्दित हुन्छन् भन्ने कुरा पनि छलफलको क्रममा एक सहभागीले सुनाए ।

भाद्र पूर्णिमाका दिन यस प्राकृतिक सुन्दर दहमा सिद्ध देवताको पूजा-आजा गर्ने परम्परा रहेछ । गुप्त दहको पानीले नुहाए पाप आदिको नष्ट हुन्छ भन्ने धार्मिक आस्था गाउँलेहरू राख्दा रहेछन् ।

## पुपल र सुनदह :-

ढोरपाटन शिकार आरक्षभित्र पर्ने रन्मा, मैकोट गाउँ विकास समितिको पुपाल भन्ज्याङ्ग, खुरलफाँट, जाङ्गला भन्ज्याङ्ग र कुतला बादली पाटनको बीच भागमा अलग-अलग दुईवटा पुपाल र सुनदह अवस्थित छ भन्ने कुरा सहभागीहरूले बताउनु भयो । उच्च लेकाली फाँटमा रहेको सुनदह अत्यन्त सुन्दर र रमणीय रहेछ । सुनदहबाट हिमाली श्रृंखलाहरूको अवलोकन गर्न पाउँदा आगन्तुकहरू जो-कोही पनि आनन्दित भइन्छ । बुढा-पाकाको भनाइअनुसार सुनदहमा पाइने काम्नो जातका चरा र उसको जल क्रिडाले आगन्तुकहरूको मनोभावनामा डुबाइदिन्छ रे ।



## अन्य ताल र झरनाहरु :-

छिप्री दह, खारा दह, सितल पोखरी, फूलबारी ताल, दादुरे ताल, साख दह ।

## झरना :-

### सिमैछरी झरना

स्यार्पु गाउँ बाँफीकोट गाउँ विकास समिति अर्न्तगत पर्ने उक्त झरना लगभग १०७ मिटर माथिबाट झरेको कुरा गाउँलेहरू हामीसँग बताए ।

### नौधारी झरना

रन्मा, मैकोट गाउँ विकास समितिको स्वर्गद्वारी लेक क्षेत्रमा अवस्थित यो नौधारी झरना असाध्यै सुन्दर देखिन्छ भन्ने तथ्य छलफल गर्ने क्रममा उनीहरूले बताए । नौ वटा मुहानद्वारा लगभग २०० मीटर उचाई लिएर बनेको उक्त झरनाको दर्शन गर्दा सिद्ध बाबाको दृष्टि पर्छ भनि धार्मिक किम्बदन्ती रहेछ । त्यस्तो





जनविश्वास गाउँ घरमा विद्यमान रहेको हुनाले धेरै दिनको पैदल यात्रा गरी त्तजनहरू यस क्षेत्रमा आउने परम्परा रहेको कुरा उहाँहरूले बताउनुभयो । भक्तजनहरूले आफ्नो मनोकांक्षा पुरा होस् भनि भेँडाको थुङ्गवा चढाउने धार्मिक चलन रहेको कुरा सहभागीले बताउनुभयो । नौधारी झरना हिमाली श्रृंखलाको काखमा रहेको हुनाले सुन्दर र मनमोहक रहेको प्रष्ट हुन आउँछ रे ।

### गुल्जा र धुम्चे झरना

त्यसै गरी गुल्जा र धुम्चे झरना आदि रूकुम जिल्लाका प्रसिद्ध सिमसार क्षेत्रहरू रहेछन् ।

### नदीहरु :-

ठूली भेरी हिमनदी डोल्पा जिल्लाको बुबुर्ङ नामले चिनिएको रहेछ । सानी भेरीजस्तै साना-ठूला नदीहरू लुकुम, कोर्जा, लाचे, बाहुले, मैकोट गार्ड, नाँर्थी गार्ड पेलया, जहारी, कुचीवाङ्ग, सिम्रुत, साँख, तिल्चा, सेतीगाड गुम्ररी जाड, पुमा, जीतु, डल्ली गाड, गीगा गाड, मग्मा, देउता, तरगाई (अगाडि आउँछ) मुग्ल, रूजी र चुन्वाङ्ग छन्, चुन्वाङ्ग ठूली र सानो भेरी नदीको सहायक हुन् । भौगोलिक विविधता र विकटतामा रहेका रूकुम जिल्ला अग्ला-होचा पहाड, उपत्यका, हिमाल, पर्वत माला आदिले सजिएको देख्न पाइन्छ। उष्ण समशीतोष्ण र शीतोष्ण मुख्य तीन भागमा विभाजन गरिएको हावापानी ३४.४ डिग्री सेल्सियसदेखि ०.४० डिग्री सेल्सियस सम्मको तापक्रममा परापूर्वकाल देखि रहेको जनजीवन, र हन सहन, रीतिरिवाज, परम्परागत, जीवन शैली, सिमसार क्षेत्र, जैविक विविधता उक्त जिल्लाको सम्पदा देखिन्छन् । सीसौ, साल, साज, चिउरी, यार्सागुम्बा, पाँचऔंले, कुरिलो, तिते, टिमुर, पाङ, बादल पाटे, बोझो, हर्रो, अमला, पदमचाल, सतुवा, हलहले, कुम-कुम, गुर्जो, घोडताप्रे, चिराइतो, मलायो, गुच्छीच्याउ, शिलाजीत र पाखनवेद जडीबुटीसँग सम्बन्धित वन

पैदावार र खनिज सम्पदा हुन् । काजी राता हिम श्रृंखलामा पर्ने सिस्ने हिमाल, लालपाटन चित्रीपाटन, डोल्पा जाने दवारी भञ्ज्याङ्ग, च्याकुल कन्याङ्ग कुरूङ्ग, (पाग जोडी) जस्ता हिमाली क्षेत्र र जाङ्गेथला, निसिलेक लाल पाटन हिरनेता भाटहरू बन्यजन्तु जस्तै कस्तुरी, ब्वासो (जंगली कुकुर), हरिण, थार, नउर, डाँफे, रतुवा, बनेल, मुनाल आदि हुन् । यो क्षेत्रमा रातो पाण्डा, वन विरालो, हिउँ-चितुवा, पाहा, ध्वाँसे चितुवाको वासस्थान रहेको तथ्य स्थलगत अध्ययनको क्रममा प्राप्त भयो ।

सुनदह जाने अवसरमा रातो पाण्डाबारे गाउँलेहरूसँग छलफल गरिएको थियो । उहाँहरूले निर्देशित गर्नुभएको क्षेत्रमा फेला पारिएको दिशालाई अवलोकन गर्दा रातो पाण्डाको हुन सक्ने कुरा अध्ययनले देखाएको छ । त्यसबारे स्थलगत अध्ययन गर्नु पर्ने संभावना रहेको छ । यसो त नवचर, थलचर र जलचरबारे अध्ययन-अनुसन्धान र संरक्षण गर्नुपर्ने आवश्यकता महशुस सम्म अनुसरण गरियो । अध्ययनकै क्रममा सेरा गाउँ विकास समितिमा पर्ने ढोरपाटन खोलाको किनारामा परापूर्वकाल देखि रहेको एउटा माछाको कुरा रहेको तथ्य थाहा भयो । किम्बदन्ती अनुसार ऐतिहासिक कालमा उक्त क्षेत्रमा ठूलो पोखरी रहेको तर पछि भौगोलिक हलचल उत्पन्न हुनगई उक्त पोखरी पुरिन गएको र अझै पनि पहाडीमुनि पोखरी रहेको हुन सक्ने उक्त गाउँबासीहरूको अनुमान पाइन्छ । उक्त पोखरीको एक छेउ प्वाल भएर त्यस खोलामा खुलेको हुनसक्ने जनविश्वास रहेछ ।

उक्त (कुर) दुलोबाट असला जातको माछा फुतु-फुतु झरी राख्ने प्राकृतिक देनको रूपमा गाउँलेहरू विश्वास गर्दा रहेछन् । अटुट् अथवा कहिल्यै नसकिने



गरी लगातार माछा झरी राख्ने हुँदा गाउँलेहरूले माछा थाप्ने डोको तयार पारेको रहेछ । रातको समयमा माछा धेरै खस्ने र आफ्नो बुकीबाहेक छिमेकीले लगिदेला भनि एउटा सानो घर बनाई पालै-पालो रखवाली गर्न उनीहरूको परम्परा रहेछ । उक्त माछालाई स्थानीय बजारमा बिक्री गरी आफ्नो खर्क (बुकी) का समुदायमा बचत राख्ने चलन पनि रहेछ । उक्त क्षेत्रको अध्ययन गर्न पनि रोचक हुन सक्छ ।

विविध भौगोलिक अवस्था सिमसार क्षेत्रको धनी रूकुम जिल्लाको रून्मा, मैकोट, ताकसेरा र हुकाम गाउँ विकास समितिको धेरै भू-भाग ढोरपाटन वन्यजन्तु शिकार आरक्षभित्र पर्ने कुरा यस अध्ययन गर्ने क्रममा थाहा भयो र ताकसेरा १४१७ वर्ग कि.मी. मा फैलिएको रहेछ । वन्यजन्तुको शिकार खेल्नको लागि विश्वमा नै प्रख्यात आरक्षको रूपमा रहेको उक्त क्षेत्रमा नाउर, घोरल, झारल, थार आदिको शिकार खेल्न अनुमति दिने व्यवस्था गरिएको रहेछ । कस्तुरी मृग, बँदेल लगायत अन्य वन्यजन्तुबारे अध्ययन गर्नुपर्ने आवश्यकता देखिएको छ । भौगोलिक विकटता र विविधता भएकै कारण वन्यजन्तुहरूको वासस्थानलाई प्राकृतिक रूपमा संरक्षण भइरहेको कुरा उक्त अध्ययनद्वारा ज्ञान भयो । यस्तो अथाह प्राकृतिक सम्पदाहरूको संरक्षण जनस्तरबाट हुन आवश्यक देखिएको छ । प्राप्त सूचनाको आधारमा हुकाम गाउँ विकास समितिमा जम्मा घरधुरीको संख्या ३५४ अधिकांश मगर समुदायको वसोवास रहेको पाइन्छ । १६८३ जनसंख्यामध्ये पुरूषको संख्या ८३९ र ८४४ महिला भएको तथ्य थाहा हुन आएको छ । ८५६ घरधुरी ४,३७३ जनसंख्या तकसेरा गाउँ विकास समितिमा रहेको पाइन्छ । त्यसैगरी २,१७२ महिला र २,२०१ पुरूषको संख्या प्राप्त भयो । २,४८३ जम्मा जनसंख्या १,२७३ पुरूष र १,२१० महिला ४२९ घरधुरीमा बसोबास रून्मा मैकोटमा रहेको पाइयो ।

लगभग ४,२०० मिटर उचाईंको माली काखमा अवस्थित पवित्र सुनदहको धार्मिक-सांस्कृतिक अध्ययन गर्ने क्रममा रन्मा आइपुगेपछि वास्तविक कुरा थाहा भयो । गाउँ-घरका बूढा-पाकाहरूसँग बसी सहभागितामूलक छलफल गर्दा पो पवित्र सुनदह रन्मालीहरूको बुकी (खर्क) भित्र पर्दो रहेछ । परम्परागत वसोबास, एक अर्काको घरसँगै जोडिएको बस्ती रहेको रन्मामा पर्ने सुनदह विभिन्न भञ्ज्याङ्ग, खोलानाला तर्दै जानु पर्ने रहेछ । खाम मगर भाषा बोल्ने मगर समुदाय रहेको रून्मा गाउँमा सहभागितामूलक छलफल कार्यक्रम राखिएको थियो । गाउँका बुढा-पाकाहरूलाई सम्बोधन गरी सुनदहबारे जानकारी भनिदिन अनुरोध गरिएको थियो । उहाँहरूको

सल्लाह-सुझावअनुसार रन्माली गाउँघर र उहाँको दैनिक उपयोगमा आउने प्राकृतिक तथा जैविक र देवालयहरूको स्रोत नक्सा सामूहिक छलफल गरी तयार पारियो । स्रोत नक्सा (नं. १) मा रन्मालीहरूको आफ्नो परम्परागत बसोबास गाउँ, पानी कम पर्ने, अर्थात् वर्षात् सुख्खा धेरै हुने, हावा-बतास धेरै लाग्ने भएर होला झुरूप्प सबै घरहरू एकापसमा जोडिएर बनाइएका प्राय:जसो दुईतल्ले माटोले छापेर ढुङ्गाका पाताहरू विच्छाएर निर्माण गरिएका गाउँहरु रन्मामा छन् । अधिकांश घरको अगाडि घरपालुवा पशु जस्तैः गाई, गोरू, बाख्रा, भेँडा, सुँगुर, कुखुरा आदि कौशीछेउमा पर्खालको घेरा लगाई (बनाई) राख्ने परम्परा रहेछ । सामूहिक छलफल गर्दै रन्मालीहरूको गाउँघरको नक्सा तयार गर्ने क्रममा गाउँका बुढा मगर पूर्खा अथवा बुद्धिजीवी नरमान बुढामगर भन्नुहुन्छ -

**"हाम्रो ६६ वटा गाउँ छ । अहिले म बसाँई सरेर यस ठाउँमा यो सानो रन्मा गाउँ ३० घर धुरी मिलेर बसेको छौं । यो गाउँ अलि खुल्ला भएकोले घरपालुवा जनावरहरु चराउन यस ठाउँमा सुविधा छ । माथिल्लो ठूलो रन्मा गाउँ हो । त्यस गाउँमा १४० कुहोरिया घर धुरी जति छ होला बाबु । मेरो पुरानो गाउँ पनि त्यही हो । धेरै गाउँ घर भएर हामी चाहिँ यहाँ**



**बसेका हौं। त्यस गाउँमा खाने पानीको पनि असाध्यै दु:ख छ। जम्मा घर धुरीको लागि एउटा छ। यहीको पानी भरेर सबैले पानी पिउनु पर्छ उक्त ठाउँमा। पशुहरुलाई पनि खान पुऱ्याउनु पऱ्यो। त्यही दु:खले छोरी, भान्जी, नाती-नातिना हरुसँग यहाँ आएर बसेको छु। यो गाउँमा पनि पानीको अलि समस्या नै छ। तर यस ठाउँमा हामीलाई दुईवटा छ। पानी पनि मिठो छ यहाँको। "**

स्रोत नक्सा अनुसार रन्मा गाउँ वासीहरूको उत्तरी क्षेत्रमा नजिकै रहेको जङ्गलमा उनीहरूको गाउँले धार्मिक तथा सांस्कृतिक देवस्थल रहेछ। उक्त जङ्गलमा सिद्ध भगवानको पूजा गर्ने धार्मिक परम्परा रन्मावासीहरूको रहेछ। सबै जना मिलेर पूजा गर्ने सामाजिक चलन रहेको पाइयो। उनीहरूको बुकी (खर्क) मा रहेको पवित्र हिमाली पोखरी सुनदहमा पूजा गर्न जाने क्रममा उक्त स्थानमा गई पूजा गरेर सुनदहतर्फ जाने गर्नु पर्दछ रे। त्यसै गरी सुनदहबाट फर्कने क्रममा पनि सिद्ध भगवान बस्ने स्थानमा गई पूजा गरेर गाउँ घरमा आउने रन्मवासी बूढा मगर समुदायको धार्मिक तथा सांस्कृतिक परम्परा रहेको कुरा छलफल गर्ने क्रममा सहभागीहरूले बताउनु भयो।

गाउँ घरभन्दा केहीपर छेउमा रहेको जहाँबाट गाउँलेहरूले पिउने, सरसफाईको लागि आवश्यक पर्ने पानी गाग्रीमा भरी डोकोबाट बोकेर घरमा प्राय:जसो छोरी अथवा महिलाहरूले ल्याउनुपर्ने गाउँ समाजको चलन रन्मा गाउँमा पनि रहेछ। उक्त रन्मा गाउँमा परापूर्वकाल देखि भई आएको उक्त एउटा मात्र रहेछ। पिउने पानीको स्रोत पहिलाको भन्दा आजभोलि उक्त मा पानी कम हुँदै गएको स्रोत नक्सा तयार गर्ने क्रममा बताउनु भयो। श्री नरमान बूढा मगरको भनाइअनुसार -

**" यो एउटा मात्र हामीहरुको सामूहिक पानीको स्रोत, हाम्रा बाबुबाजेको पालादेखिको यो हामी सानै उमेर छँदादेखि भई आएको यस्तै छ। हामी त ६० वर्ष नाघि सकियो। खै के भएर हो मान्छे धेरै भएर पनि होला। माथिल्लो भागमा भएको जंगल माँसिदै गएको हुनाले हो कि पानी पहिलाको भन्दा कम हुँदै गएको छ। "**

सम्पूर्ण गाउँ घरको एउटा मात्र पानीको भविष्यमा हराएर गयो भने रन्मा गाउँ वासीहरूलाई पिउने पानीको समस्या नहोला भन्न सकिन्न। देशका त्यस्तै अन्य दुर्गम क्षेत्रमा पिउने पानीको मुहान सुकेको कारण गाउँले सबै अन्यत्र बसाँई सरेर गए भन्ने खबर

कहिले काहिँ सुन पाइन्छ । जलवायु परिर्वतनको असरले गर्दा लामो समयसम्म खडेरी हुने हुनाले निर्दोष गाउँवासीहरू वातावरणीय शरणार्थी हुन परिरहेको अवस्था छ । त्यस्तो अवस्था त नआउला तर उक्त पानीको मुहान भने संरक्षण गर्न आवश्यक देखिन्छ ।

परापूर्व समयदेखिकै विद्यमान उक्त रन्मा बासीहरूको धार्मिक तथा सांस्कृतिक महत्त्वको क्षेत्र पनि रहेछ । गाउँलेहरू सामूहिक रूपमा उक्त स्थानमा मंसिर पुर्णिमाका दिन पूजा गर्ने धार्मिक परम्परा पनि रहेछ । भेँडाको थुम्ब (साड) को बलि चढाई रिगा बाहा देवताको नाउँ लिएर “गाउँ-घर अथवा जमिन माथि कहिले पनि बाढी, पहिरो नजाहोस् भनेर” दमाहा बजाएर पूजा गर्ने परम्परा रहेछ । उनीहरूको आफ्नो मातृभाषामा त्यसरी पूजा गर्ने परम्परालाई “दमालाई देम” भन्दा रहेछन् । रन्मा गाउँमा परम्परा रूपमा रहेको यो धार्मिक चलन पर्यावरण अथवा प्राकृतिक स्रोत जस्तैः पानीहरूको संरक्षण र बुद्धिमतापूर्वक उपयोग सिद्धान्तअनुरूप देखिन्छ । छलफल भएअनुसार गाउँ घरछेउमा रहेको वनजंगलमा घोरल जातका वन्यजन्तु पाइन्छ भन्ने कुरा बताउनु भयो । त्यसै गरी समाजमा भएको बुद्धिजीवी तथा धामीझाँक्रीहरूको घर पनि देखाइयो । गाउँलेहरूको खेती गरिने क्षेत्र पनि स्रोत नक्सामा देखाइयो । सुनदह पुग्ने गोरेटो, बाटो जाँदा कहाँ बास बस्ने, कहाँ पिउने पानी पाइन्छ भन्ने जस्ता आवश्यकीय कुराहरूको जानकारी गाउँलेहरूले छलफल गर्ने क्रममा दिनु भयो ।

चित्र नं. (२) मा वर्णन गरिएअनुसार गाउँलेहरूले एक आपसमा छलफल गरी सुनदहसँग अनुवद्ध भएका सिमसार क्षेत्र, खोला नाला, पोखरी आदिको रेखाङकन बनाइदिनुभयो । पवित्र सुनदहबाट उत्पन्न भई बग्ने सुनदह खोला ईचैपु भै (खोला) केही तल आएर रन्मा खोलामा मिंसिदो रहेछ । सभागितामुलक छलफल तथा सामाजिक स्रोत नक्सा तयार गर्ने क्रममा सहभागीहरूले बताउनु भएअनुसार -

> **“रन्मा गाउँदेखि सोझै उकालो जानु पर्ने । खर, निगालो सल्ला आदिको जङ्गल पाइन्छ । त्यहाँबाट धेरै हिँडेपछि रन्मा खोला आइपुग्छ । उक्त रन्मा खोलामा पाह मगर भाषामा (कुइपा) पाउन सकिन्छ । सुनदहबाट उत्पत्ति भएर बग्ने सुनदह खोलामा आएर भेट हुने रन्मा खोला घना जङ्गल भित्र हुँदै आउँदछ । मैकोट गा.वि.स.को सिमाना भै बगेर सुनदह खोला भेरी नदीमा मिसिएर बग्दछ ।”**



डोल्पा जिल्लाबाट मान्छेहरू यला पास भएर सुनदह भएर रूकुम, सल्यान, दाङ्ग हुँदै काठमाडौं आउने गर्दा रहेछ। पहिला-पहिला त डोल्पालीहरू त्यसै बाटो भएर भेडा, च्याङ्ग्रा हिँडाएर व्यापार गर्ने चलन पनि रहेछ। पहिलाको तुलनामा आज भोलि धेरै कम मात्रामा उक्त बाटो भएर डोल्पालीहरू हिँड्ने गर्दो रहेछ। साउन, भदौ महिनामा रन्मालीहरू भैँडागोठ सुनदह छेउ-छाउमा लैजाने चलन आजभोलि पनि छ रे। भैँडा पालनसँगै जोडिएको सुनदह सम्बन्धमा दन्त्य कहानी गाउँ-घरमा रहेछ। ६० वर्ष पार गरिसक्नुभएका रन्माबासी पूर्खा नरमान बुढा मगरज्यूले हाम्रो इतिहासको लागि रहेछ भन्दै भन्नु भयो -

"आजभन्दा धेरै पुरानो कुरा हो। हाम्रा बाजेलेहरुले म सानो उमेर भएको समयमा कथाको रुपमा भन्नु भएको थियो। सुनदह त हाम्रो बाजे बजुको पालामा त सुन दिने गर्दथ्यो रे। कालो खाकर (पर्वत) भित्र बसेको सुनदह पहिला-पहिला त सुनदेवता बसेको हुनाले सुनझैं पहेलो देखिने भएकोले सुनदह नाम रहेको भनि हाम्रा बाजे बजुले भन्नुहुन्थ्यो। त्यसैगरी गाउँ-घरका मान्छेहरुले भनेअनुसार भेडा गोठालाहरु उक्त दहछेउमा पुग्ने बित्तिकै सुन भइहाल्ने रे। उनीहरुले खाना पकाउन लिएर गएका भाँडाहरु पनि सुन जस्तो हुनगई उम्लिरहेको देखिने हुँदा भेडा पालक (गोठाला) हरुले पोखरी देउता रिसाउनु भएछ कि क्या हो भनि धुप, बत्ती, ध्वजा, अक्षता चढाई भेडा साड, (थुम्बा) बली चडाएर पूजा-आजा गर्ने चलन चलाएको रे। त्यसै समय देखि भेडी गोठालोहरुले सुनदह भनि बोलाउने परम्परा बसालेको रहेछ। आजसम्म हामी गाउँलेहरुले सुनदह भनि जनैपूर्णिमा (भदौरे पूर्णिमा) का दिन पूजा गर्ने गर्दछौं। सुनजस्तै देखिने दहको पानी भैँडाहरु आङ्नो छेउमा आइपुग्ना साथ सुन भैहाल्ने उक्त दह बडो शक्तिशाली देउताको रुपमा हाम्रो रन्मा गाउँमा छ।"

धेरै पहिलाको कुरा सम्झँदै उहाँ भन्नु हुन्छ -

“ **हाम्रो इतिहासमा भएको रहेछ, आजभन्दा धेरै वर्ष पहिलाको कुरा हो यो । उक्त समयमा धेरैजसो मान्छेहरु डोल्पाबाट भेला हुँदै भेडा, च्याङ्ग्राहरु चराउँदै सुनदह हुँदै बागलुङ्ग, सल्यान, तुल्सिपुरतिर हिँडाएर बेच्न लैजाने चलन रहेछ । पछि पैसा धेरै भएपछि नुन, रगन खानेकुराहरु बोकाएर डोल्पातिर ल्याउने चलन रहेछ ।** ”

छलफलमा पाल्नुभएका पूर्खाहरूले बताउनु भयो -

“ **एक समयमा त्यसरी नै एकजना दमाई (दलित) व्यापारी धेरै भेडा, च्याङ्ग्राहरु यला हुँदै सुनदह आइपुगेछ रे । सबै भेँडा,च्याङ्ग्राहरु त सुनदहमा फटाफट हाम फाल्दै सुनझैं बिलाउँन पो थाल्यो रे ! ती व्यापारी दमाई त छक्क परेछन् रे। ऊसँग भएको सबै भेँडा, च्याङ्ग्राहरु त दहभित्र हाम फाल्दै सुन भएर हराई गयो रे । अब के गर्ने आफूले लगाएको भेँडाको उनी कोट फुकालेर पोखरीमा फ्यालेछ रे उनीको कोट पनि सुनजस्तै बिलाएर हरायो रे । उसले साथमा लिएर आएको खुकुरी पनि खोलेर दहमा फाल्दा, खुकुरी त सुन भएछ रे । यहाँ त शक्तिशाली भगवान बसेको रहेछ भनि आफूले लगाएको गन्हाउने मोजा खोलेर यो पनि सुन होइजाओस् भनेर दहमा फ्याल्दा फोहर भयो भनि दहमा भएको देवता रिसाएर पानीले भरिएको दह भएछ रे । यस्तो घट्ना कहानीद्वारा उत्पन्न भएको सुनदह हाम्रो यस क्षेत्रको लागि सबैभन्दा ठूलो देवताथान हो । सबैजनाले आफूलाइ परेको पीर मर्का आवश्यक भएको कुराहरु माग्ने धनसम्पत्ति, लक्ष्मी, घरपालुवा पशु मिलीजाओस् भनि वर्ष दिनमा एक पल्ट पूजा गर्न जाने परम्परा रहेको छ ।** ”

गाउँ-घरमा अन्नबालीको लागि हावा, पानी राम्रो होस्, समाजमा झैं-झगडा नहोस्, खान-लगाउन पुगोस्, बाढीपहिरो नजाओस्, रोग कष्ट नलागोस् भनि पूजा गर्ने धार्मिक चलन समाजमा पहिलादेखि नै भइआएको कुरा त्यहाँको पूर्खाहरूले छलफलमा बताउनुभयो । घुरमाइलो घरमा परम्परागत बसोबास रहेका गाउँले जीवन । भोकाउनु भयो होला, आलु खाएर जानुहोस् भन्द बोकी ल्याएको धमिलो पानी र आलु कालो भाडामा बसालेपछि सुल्फामा सुर्ती कोच्दै सुनदह जाने भन्नुहुन्छ, बाटो अप्ठ्यारो छ, टाडो छ, कसरी पुग्नु हुन्छ त ।



बिस्तारै जानुपर्छ । अझै धेरै दिन लाग्न सक्छ भनि मगर आमाले भन्नुभयो । पानीको अभाव भएको ठाउँमा बस्नु भएको रहेछ । राम्ररी नपखाली पकाएको आलु, खुर्सानी, टिम्मुरको अचारमा चोपल्दै खाइयो । भीरबाट लडि मरेको घोरलको मासु आगोमा पोल्दै हामीलाई खान दिनु भयो । मिठो घोरलको पोलुवा खाँदै धमिलो पानी लोटाबाट पिएर हिँड्ने काम भयो । गाउँ-घरमा लहलहै भै जुङ्गे बला



झकाएर फलेको उवा स्थलगत अध्ययन गर्न जाने क्रममा देखियो । सुनदह जाने अन्तिम रन्मा गाउँ पुगेर गाउँले दाजुभाइले आफन्त सम्झी भुटेको मकै, गहुँ, जौ र उवाको निगारको सगुन दिएर आरमसँग हाम्रो पवित्र धार्मिक स्थल पुगेर आउनुहोस् भनि बिदा गर्नु भयो । सुन्दर प्राकृतिक र धार्मिक आस्थाको स्थान सुनदह अध्ययन समूह रन्मा गाउँबाट अगुवाको रूपमा सोझै उकालो बाटो लाग्यो । धेरै उकालो हिँडेपछि शान्त भएको प्राकृतिक सुन्दर तर भौगोलिक विकट देखिने उच्च ठाउँमा आइपुग्यौं । गाउँलेहरू भदौ पूर्णिमा छेकमा धामी झाँक्रीहरू सँग हिँड्ने बाटो ठाउँ-ठाउँमा धार्मिक क्षेत्रहरू रहेछन् । भौगोलिक तथा प्राकृतिक स्रोतले सम्पन्न रन्मा गाउँ-समुदायहरूको पवित्र धार्मिक स्थल सुनदह ढोरपाटन बन्यजन्तु शिकार आरक्ष अन्तर्गत रहेछ । विशाल फाँट (क्षेत्र/सम्म भू-भाग) देखिने उच्च ठाउँ मलेधु एक रहेछ । मौसमअनुसार वनजंगल, लालीगुराँस र रन्माली खोलासँग मिसिएर रन्मा गाउँ

भएर बग्दा रहेछ । चिसो हिमाली-सिमसार पारिस्थितिकीय प्रणालीबाट बग्दै आएको स्वच्छ पानीमा बस्ने जलचर असला माछा "रन्मा गाउँबाट हाम्रो अनुरोधमा सुनदह लान सहयोगी अगुवा मगरज्यूले यो खोलामा अति मिठो असला (डाकुङ)" माछा पाइन्छ भनि भन्नु भयो । उच्च पहाडपार गर्दैसुन्दर बाटोमा जमेर रहेका हिउँ कुल्चदै गोठमा बास बस्दै हिमाली जंगल हुँदै रन्मा खोला तरियो । निगोलेघारी, सल्ला, गुराँस लगायत वनस्पति जैविक विविधताको मुहान उक्त क्षेत्रमा, थार, घोरल, बंदेल, कस्तुरी मृग (मगर भाषामा-ताउला) विभिन्न प्रकारका प्रजातिहरू वनभरि देखिन पाइन्थ्यो । घना वनभित्र गाउँलेहरूले रूखको ठुटोमा कुँदेर मानव आकृतिका मूर्ति बनाएको देखिन्थ्यो । यात्रा धेरै छ, बाटो अप्ठ्यारो छ, निगालोको दरिलो लट्ठी चाहिन्छ भनेर अगुवा साथीहरू हिँड्नको लागि सहाराको निमित्त लट्ठी तयार पार्दै हुनुहुन्थ्यो । एकान्त, काँडा निगालोघारी, उकालो अप्ठ्यारो बाटो तर नौलो प्रकृतिक संसार, डाँफे, मुनाल एक आपसमा भुर्र-भुर्र उडिरहेका देख्न पाइन्थ्यो । वन्यजन्तु घोरल हामी भन्दा केही अघि हाम फाल्दै, थार दगुर्दै भागिरहेको देखिन्थ्यो ।

प्रकृतिमा आ-आफ्नो अस्तित्व कायम गर्न संघर्ष गर्नुपर्ने प्राकृतिक नियमअनुसार डढेलोले खाएको रूखको बुटामा उम्रिएको गुराँसको बोटबाटै छेउमा देख्न पाइयो । एक-अर्कामा निर्भर रहनुपर्ने आ-आफ्नो पवित्र संसार बुझ्रेर बुझ्रिनसक्नु छ । सुन्दर प्राकृतिक वन-वन्यजन्तु आदिको संसारलाई छाडेर हामी नाङ्गो चौर भएको ठाउँमा पो आइपुगेछौं । उत्तर पूर्वमा रहेको सुन्दर हिमाल हामीलाई पर्खिरहेको जस्तो भान हुने । हिमचुली



हेर्दा लामो यात्राको थकाई पनि बिर्सन् सक्ने रहेछ भन्ने कुरा यात्राका एक साथीले व्यक्त गर्नु भयो।

सुन्दर हिमाली दृश्य हेर्दै उचालिएको यात्रा सुनदहतर्फ हानियो। पिउने पानीको प्यासले सबै जनाको घाँटी सुख्खा भएछ। अगुवा साथीले म पिउने पानी लिएर आउँछु है भनि जानु भयो तर सुकेको कारण पानी नलिई फर्कनुभयो। अन्य सालभन्दा यो वर्ष ढिलो हिउँ परेकोले देब्रे पाटामा हिउँ जमेर बसेको रहेछ भन्दै अगुवा साथीले बताउनु भयो। हिँउ कुल्चदै अगाडि जाने क्रममा ढुङ्गे पहरमा हिउँ पग्लेर मास्तिरबाट पानी बोतलमा थापेर अगुवा साथीले हामी लाई पिउन दिनुभयो। चिसो हिमपानी दाँत नै कठ्ङग्रीने घाँटी नै चिरेर लैजानेझैं हुने पानीको चुस्की मारेपछि सुनदह पुगेर फर्कने आँट र हिम्मत कस्सेर हिंडियो। ढोर पाटन शिकार आरक्षका गेम स्काउटज्यू पनि थकित हुनु भएछ। यस क्षेत्रमा त नाउर पाइन्छ भन्दै नियाल्दै हुनुहुन्थ्यो। केही समय हिंडेपछि हिउँ परेर बाटो नै नदेखिने गरी बसेको रहेछ। जे त होला, यत्तिका लामो बाटो हिंडेर आएपछि, जिउँदो भेँडालाई सुनमा परिणत गर्नुहुने पवित्र आत्मा भएको सुनदहको दर्शन गरेर मात्र फर्कनुपर्छ भनि अघि बढ्ने जमर्को गरियो। सुनदह हिमाली क्षेत्र रूकुम जिल्लामा रहेको पवित्र धार्मिक तथा ऐतिहासिक सुनदहको दर्शन केही प्राविधिक कठिनाई हुने दे खिएको कारण रन्मा गाउँबाट ध्वजा, अक्षता त्यही ठाउँमा सुनदहको नाममा पूजा गरी अर्को पल्ट आउने बाचा गर्दै फर्कने चाजो मिलाइयो। सुन्दर सुनदह हिमाल फेदीमा पवित्र सुनदह वरिपरि का हिम-टाकुराहरूमा जमेर बसेका हिउँ हँसिला देखिन्थे। ठाडो बाटो उकालो-ओरालो भएर आएको सम्झँदा पनि कहाली लाग्दो तर सुनदह पुगेर मन फर्कन नसकिने भएको हुँदा मन त खिन्न भयो नै। तर सुन्दर र अनुपम भौगोलिक अवस्था भएकोले निकट भविष्यमा आउने सुवर्ण मौका परोस् भन्ने मनसायले पूजा गरियो। गाउँ घरमा यो साल पानी समयमा नपर्दा अन्नबाली राम्ररी



नफलेको हुनाले हाम्रा समाजमा अनिकाल भोकमरी हुने भयो । हिउँ समयमा नपर्दा अर्को साल पिउने पानीको अभाव हुन्छ कि भनि रन्मा गाउँका अगुवा साथीले सुनदह नपुगी पूजा गर्नुभयो । यस समयमा वर्षे खेती गर्ने समय भएको छ । लगाएको अन्नबाली, घरपालुवा पशु लगायत सबै घर-परिवारलाई राम्रो होस् भनि सुनदहको पूजा गर्ने चलन छ रे । पछि भदौमा फलेको अन्नफल लिएर तपाँइको निमित्त आउनेछौं भनि पूजा गर्नुपर्ने परम्परा समाजमा रहेको कुरा उहाँले बताउनुभयो । अर्कोपल्ट सुनदह र उहाँको आसपास रहेको खसेदह लगायत हिउँ (पोम) चुलीहरूको दर्शन गर्न आउने बाचा गर्दै रमाइलो हिमालयन प्रकृतिसँग बिदा मागी हिउँ टेक्दै फर्कियौं । हेर्दा सुन्दर तर असाध्यै अप्ठ्यारो भौगोलिक क्षेत्र हुँदै फर्कियौं । पिउने पानीको अभाव भएको ठाउँ विस्तारै हिउँ वर्षा हुन शुरू गरेको अवस्थामा हिँउ पग्लेर आएको पानी प्लाष्टिकमा भरी बास बस्ने ठाउँमा प्रयोग गर्न भनि लिएर आयौं । अँध्यारो भइसकेको समयसम्म नाउरहरू चर्दै डाँडामाथि आइपुगेछ । ढोरपाटन शिकार आरक्षभित्र पर्ने क्षेत्रमा त्यस्ता थुप्रै बन्यजन्तुहरू उक्त स्थानमा पाइन्छ भनि अगुवा साथीले भन्नुभयो । लुकाएर राखेको आ-आफ्नो झोला आदि ओडारबाट झिकेर बासबस्ने ठाउँमा हिउँ पानी पर्दा प्रयोग गर्ने प्लाष्टिक लिएर कुलेलम ठोकियो । सम्म फराकिलो चौर बेमौसमी हिउँ परेको कारण उम्रेको जडीबुटि पनि मरेको अवस्थामा पाइयो । त्यस्तो उच्च भौगोलिक ठाउँमा पनि बँदेलहरू आएर



उत्पातसँग जमिन उदिनेको दृश्य देख्न पाइयो । यो साल हिउँ समयमा नपरेको हुँदा नाउरहरू छिट्टै उभो फर्किएको तर उनीहरूले खाने घाँस समयमा हिउँ नपरेको हुनाले सुख्खा जमीन भई नपलाएको अवस्था देखिन्छ भनि चरन क्षेत्र नियाल्द अगुवा मगर साथीले भन्नुभयो । उहाँ भन्नुहुन्छ -

**"यो साल जाडो मौसममा हिउँ नपर्नाले गर्मी छिट्टै पलायो । गर्मी भएकोले नाउरहरु हिमालतिर चाँडै लागे । त्यस्तै डाँफे, मुनाल पनि उभो लागे तर यो हिउँदमा पर्ने हिउँ अहिले पर्दा यो वनको जनवारहरु अलमलमा परेको भान भइरहेको छ मलाई । किनकि यो पाइला हेर्दा उरालो उकालो गरेको मात्र देखिन्छ । हिउँ पर्छ उनीहरु तल झर्नु पर्छ । गर्मी बढेकोले माथि चढ्नु पर्छ । अघिल्लो सालतिर यस ठाउँमा हरियाली भई सक्दथ्यो भनि उहाँले चौरलाई देखाउँदै भन्नुभयो । त्यही ठाउँ भएर उनीहरु सुनदह भन्दा माथिल्लो हिमाली भेगमा यार्सागुम्बा टिप्न जाने गर्नुहुँदो रहेछ ।"**

पहिला जमनामा रन्मा गाउँका केटा-केटीहरू जम्मा भएर त्यस चौरमा असार-साउन महिनामा गीत गाउँदै सुनदहलाई सम्झदै ढुङ्गाको चिनो भकारी निर्माण गर्ने परम्परा रहेछ । त्यस्तो कार्यको लागि गाउँ-घरका केटीहरूले आफूसँग भएको धन (पैसा)



व्यहोर्ने र केटाहरूले ढुङ्गा बोकेर ढुङ्गे चिनो उक्त ठाउँमा निर्माण गर्ने चलन रहेछ । कुनै ठाउँमा एउटा त कुनै ठाउँमा दुईवटा सँगै निर्माण गरिएको त्यस्ता चिनो (भकारी) बनाउँदा स्तर मिलाएर गाउँदै नाच्दै आफ्नो सम्झनाको लागि बनाउने परम्परा थियो रे ।

**"ए-लै, लै यस ठाँउमा आर्य माया लगाऔं । ऐ-ऐ-है यस ठाँउको सिमे-भुमे, हे देउता हुँदै देवा । यो माया लौं कसो बनाउ चोग्ले भकारी बनाउन लौं हाम्रो मायाले शीरमा ऐ-ऐ यो जुनीमा यस्तै भो नि ऐ-ऐ है । अर्को जुनीमा लाउला माया ऐ है नी ल ।"**

त्यसरी प्रकृतिमा गाएर आफ्नो भावना व्यक्त गर्ने सामाजिक परम्परा समाजबाट बनाएर छाडेको भकारीहरू पुर्खौली चिनोको रूपमा जीवित छन् । प्रकृतिसँग मिलेर गाइने गीत, नाच, धार्मिक तथा सांस्कृतिक परम्परा समाजबाट हराए भने प्राकृतिक संर क्षणसँग सम्बन्धित ज्ञान पनि हराएर नाश हुने हुन्छ । त्यसो भएको हुंदा त्यस्ता परम्पराहरूलाई अध्ययन र संरक्षण गर्नुपर्ने आवश्यक देखिन्छ ।

विभिन्न आकारको त्यस्तो भकारी रहेसम्म आफ्नो सन्तानहरूले आफ्नो पूर्खाहरू तन्नेरी-तरूनी अवस्थामा तयार गरिएको भनि सम्मान त गर्लान् तर उनीहरूले गाएका लय भने



हराएर गयो । चिनोको लागि गाउँलेहरूले निर्माण गरेका त्यस्ता भकारीलाई उसै ठाउँमा छाडेर फर्कने क्रम जारी रह्यो । बनजङ्गलको बाटो पिउने पानी भएको ठाउँ हेरी खानेकुरा पकाउँदै प्राण धान्ने काम भयो ।

भौगोलिक अवस्था अनुसार सिमसार क्षेत्रमा पाइने साग टिपेर गाउँलेहरूले बनाएका स्याउले गोठमा खाना खाइयो । चिसो हिमाली सिमसारबाट आएको स्वच्छ पानी प्राकृतिक जंगल वन्य जन्तुहरूको आरक्षण भएको हुँदा उक्त पानीको स्रोत संरक्षित भएको रहेछ ।

सुन्दर रन्मा गाउँ, भौगोलिक अवस्थाले गर्दा होला आधुनिक सुविधादेखि टाढा भएको पाइन्छ तर पनि निरोगी गाउँले जीवन बिहान, बेलुका जाँतोमा मकै, गहुँ, जौं, फापर, कोदो आदि पिँध्नु, भान्छामा आँटा (ढिँडो) बनाउनु, घर परिवारलाई खान दिनु, कुवामा गई गाग्रीमा पानी भरी कुवाबाट पानी बोकेर ल्याउनु,खेतबारीमा काम गर्नु जस्ता दैनिकी कार्य, खोटो साल्लाको चोईटा बालेर साँझमा उज्यालो पार्नुपर्ने, पाखा भित्तामा प्राण धान्ने अन्नबाली लगाउने गर्छन् । समयमा पानी नपरेको कारण यस पाली मकै बाली लगाउन ढिलो भयो । जमिन तातो भइसक्यो तर माटोमा चिसोपना छैन भनि गाउँका पूर्खाहरूले बारीमा मकै, सिमी रोप्न भनि जान लागेको भन्दै हामीसँग बताउनुभयो ।

> **“यो साल त कुन्नी–अर्को साल भने यस्तो बेला लगाएको अन्न के फल्छ होला है ‘भोकैले मरिने होला नानी’ सुनदह पुगेर पनि आइपुग्नु भएछ । सुनदह राम्रो छ । तपाईंहरुको इच्छा पूरा होस् ।”**

बारीको कान्ला (डील) मा फलाएको अन्नलाई सुरक्षित राख्ने परम्परागत





ज्ञान, शिप बुद्धिमतापूर्ण उपयोग सिद्धान्तमा आधारित हुन्छ । खेती-पाती, कुट्टो-कोदालो गरि विताउनु पर्ने हाम्रो जिन्दगी सुनदह 'हामीहरू हरपल समयमा सम्झना गर्ने छौं ! हे सुनदह ! ब्राहा देउता परमेश्वरी ! धन देऊ, रक्षा गर, चिन्ता नमिलीजा, जीउको वर दिनु, धनको वर दिनु, सुस्तरी बैरी नलागोस्' भनि सुनदहमा पुगेर वर माग्ने, पूजा गर्ने, धार्मिक परम्परा भएको कुरा पूर्खा नरमान बुढामगर ज्यूले भन्नुभयो ।

अन्न-बालीमा रोग किरा नलागोस्, राम्रो उब्जनी होस्, समयमा पानी परोस्, शत्रु लाग्नबाट सुरक्षा मिलोस् भनि सुनदहको पूजा गर्ने, भेँडाको साड (थुम्बा) र घरका कुलदेवतालाई भाले काटेर पूजा गर्ने धार्मिक तथा सांस्कृतिक परम्परा रन्मालीहरूको रहेछ ।

रमाइलो गाउँ-घर, कान्लेबारी, भिरालो पाखो, यस्तै छ हाम्रो देशको बसोबास, खेती, किसान प्रकृतिसँग घनिष्ट सम्बन्ध । दिनभरी काम गरे पनि खान-लगाउन कठिन । हिजोदेखि आफ्ना बाबु-बाजेले मानी आएको परम्परा संस्कृति मान्नै पर्‍यो ।

आगन्तुक, पाहुना, सत्कार, सम्मान राख्नु हामी सबैको परम्परा हो । उकालो-ओरालो हिँड्दा असाध्यै तिर्खा लाग्ने, निर्मल पानीको कूवामा थोपा-थोपा गरी जमिनभित्रबाट रसाएर



जम्मा भएको पानी पिउन पाउनु पनि सौभाग्य जस्तो लाग्ने । जलवायु परिवर्तनको असरले यस्ता स्वच्छ पानीका कुवाहरू सधैंको लागि हराए भने निर्दोष गाउँलेहरू कहाँबाट पानी बोकेर तिर्खा मेटाउने होला ? यो साल लामो खडेरी भएको कारण ४२० ठाउँमा बन डढेलोले सखाप पार्‍या भन्थे । पानी नपरी सुख्खा भएरै होला ढोरपाटन वन्यजन्तु शिकार आरक्ष क्षेत्रको बनजङ्गलमा लागेका आगोको मुस्लो परबाट हेर्न सकिन्थ्यो ।



भोलिको प्रकृति संरक्षण गर्ने कर्णाधार निर्दोष बालबालिकाहरू पढ्ने स्कूल आफ्नो गाउँ-घर नजिक छैन रे । बिहान-साँझ प्रकृतिमा घुलमिल गर्न जानुपर्छ रे । शिक्षा पाउनुपर्ने अधिकार बाट बञ्चित यी नानीहरू प्रकृतिसँग भने नजिक छन् । जलवायु परिवर्तन हुँदै गएकाले यस्ता अवोध बाल-बालिकाहरूको दैनिकी जीवन गाउँ-घरमा झन्-झन् कठिन बन्दै गइरहेको कुरा समाजका पूर्खाहरू बताउनुहुन्छ ।

घाँस-दाउरा खोज्न, कुवाबाट पानी ल्याउन र जंगलमा भैँडा, बाखा, गाई, गोरू चराउन यस्तै नानीहरू प्रायःजसो जाने गर्नुपर्छ । खडेरी परेको हुँदा हरियो घाँस पाउन कठिन भएको कुरा गाउँलेहरू बताउँछन् । प्रकृति संरक्षण गर्नु हाम्रो धर्म हो भनि सम्झने समाज पानीको मुहान, जंगलको नजिक भकारी बनाई पूजा गर्ने परम्परा उक्त समाजमा रहेको पाइयो । विविध भौगोलिक अवस्था भएको ढोरपाटन



बन्यजन्तु शिकार आरक्ष क्षेत्रमा रहेको स्वच्छ पानी, ताल, पोखरी, दह, हिमचुली, वन्यजन्तु, थलचर, जलचर, नवचर, उभयचर, भाषिक, धार्मिक संस्कार, संस्कृतिको गहिरो अध्ययन अनुसन्धान गर्नुपर्ने आवश्यकता देखिन्छ । ■



**WWF Nepal acknowledges with gratitude the support received for the Freshwater Program from all our partners, donors and supporters:**

Government of Nepal; Ministry of Forests and Soil Conservation (MFSC); Department of National Parks and Wildlife Conservation (DNPWC); Department of Forests (DoF); WWF International; WWF UK; WWF US; WWF Netherlands; WWF Finland and Community Based Organizations.



२०२९ सालमा नेपालले राष्ट्रिय निकुन्ज तथा वन्य जन्तु संरक्षण ऐनको निर्माण गरेर वन्यजन्तु संरक्षणको आधुनिक युगमा प्रवेश गरेको थियो । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको ९ वटा राष्ट्रिय निकुन्ज, ३ वटा वन्यजन्तु आरक्ष, ३ वटा संरक्षण क्षेत्र र १ वटा शिकार आरक्ष लगायत ९ वटा मध्यवर्ती क्षेत्रको सञ्जाल रहेको छ । यी सबै गरेर नेपालको कूल भू-भागको १९.४ प्रतिशत अर्थात् २८,५८५.६७ वर्ग कि.मि. क्षेत्रफल ओगटेको छ ।

राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको प्रमुख उद्देश्यहरुमा नेपालका वहुमूल्य तथा विभिन्न वन्यजन्तु तथा वनस्पति तथा भूदृश्यको संरक्षण, सुरक्षा एवं पूर्नोत्थान गर्नु रहेको छ ।

सन् १९८७ मा नेपाल रामसार महासन्धीको सदस्य राष्ट्र भएको थियो । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभाग यस महासन्धीको नेपाल कार्यान्वयन गर्ने प्रमुख निकायको रुपमा रहेको छ ।

जैविक विविधताको संरक्षणका निम्ति सन् १९६१ मा स्थापित गरिएको डब्लु डब्लु एफ अन्तर्राष्ट्रिय गैरसरकारी संस्था हो । स्वीट्जरल्याण्डको ग्लँमा केन्द्रिय कार्यालय रहेको यो संस्था १०० भन्दा बढी राष्ट्रहरुमा क्रियाशील छ । डब्लु डब्लु एफ एक स्वतन्त्र, गैरसरकारी, गैरराजनीतिक, गैरधार्मिक र नाफारहित संस्था हो ।

डब्लु डब्लु एफले विश्वको प्राकृतिक वातावरणलाई निम्नीकृत हुनबाट जोगाई तल उल्लिखित कार्यहरुमार्फत् मानिस र प्रकृतिबीच सामञ्जस्य रहने भविष्यको निर्माण गर्ने ध्येय राख्दछ :

- विश्वको प्राकृतिक विविधता जगेना गरेर,
- पुनः प्रयोजनमा आउने प्राकृतिक तत्वको दिगोपनालाई सुनिश्चित गरेर,
- प्रदूषण र अपव्ययी उपभोग न्यून गरेर ।


## राष्ट्रिय निकुञ्ज वन्यजन्तु संरक्षण विभाग

पो.ब.नं ८६०, बबरमहल, काठमाडौं, नेपाल
फोनः ९७७-१-४२२०८५०, ४२२०९१२, ४२२७९२६
फ्याक्स : ९७७-१-४२२६६७५
ई-मेल : info@dnpwc.gov.np
वेबसाइटः www.dnpwc.gov.np

## डब्लु डब्लु एफ नेपाल
## स्वच्छ जलसम्पदा कार्यक्रम

पो.ब.नं ७६६०, बालुवाटार, काठमाडौं, नेपाल
फोनः ९७७-१-४४३४८२०, ४४३४९७०, ४४१०९४२
फ्याक्सः ९७७-१-४४३८४५८
ई-मेलः info@wwfnepal.org
वेबसाइटः www.wwfnepal.org
www.panda.org/freshwater